

मुसिकोट नगरपालिकाको समृद्धिका संभावना र चुनौती विषयक

## वौद्धिक सम्मेलन

२०७५ कार्तिक ४ र ५

# घोषणापत्र

मुसिकोट नगरपालिका

नगरकार्यपालिकाको कार्यालय

वामीटक्सार, गुल्मी १

**प्रस्तावना :**

मुसिकोट नगरपालिकाद्धारा आयोजित मुसिकोट नगरपालिको समृद्धिका संभावना र चुनौती विषयक बौद्धिक सम्मेलन २०७५ कार्तिक ४ र ५ मा विद्धानहरुबाट प्रस्तुत भएका कार्यपत्र, प्रमुख अतिथि नेपाल सरकारका परराष्ट मन्त्री माननीय श्री प्रदि कुमार ज्ञवाली, विशेष अतिथिहरु, कार्यपत्रउपर टिप्पणी गर्नुहुने टिप्पणीकर्ताहरु तथा सम्मेलनका सहभागीहरुको समेत सुझाव समेटी मुख्य ५ शीर्षक ९ उपशीर्षकमा आधारित ३५ बुदे मुसिकोट नगरपालिका बौद्धिक सम्मेलनको घोषणापत्र जारी गरीएको छ ।

## १.सामाजिक विकास

### १.१ शिक्षा :

१.१.१) समय सापेक्ष र जीवनोपयोगी शिक्षाका लागि नेपालको संविधान २०७२ को अनुसूची ८ अनुसार संविधानको धारा ३१ मा उल्लेख गरिएका शिक्षा नीति र धारा ५१ (ग) मा उल्लेखित नीति अनुसार पाठ्यक्रम निर्माण र शिक्षण सिकाई क्रियाकलापमा जोड दिने । यस प्रयोजनका निम्ति विद्यालयहरुमा प्रविधिकि शिक्षा सञ्चालन गर्ने ।

१.१.२) रुद्रावति क्याम्पसमा खुल्ला तथा दुरशिक्षाका माध्यामबाट स्नाकोत्तर तहको कार्यक्रम सञ्चालन गर्ने । २

१.१.३) सार्वजनिक पुस्तकालय : एउटा नगरस्तरीय र प्रत्येक वडामा वडास्तरीय प्रविधि मैत्री पुस्तकालय स्थापना गर्ने।

१.१.४) संग्रहालय स्थापना गर्ने : ऐतिहासिक, धार्मिक र सास्कृतिक, पुरातात्विक महत्तका वस्तुहरुको संरक्षणका निम्ति विस्तृत बस्तुचित्र सहितको नगरस्तरीय संग्राहलय स्थापना गर्ने ।

## १.२. स्वास्थ्य :

१.२.१) प्रत्येक वडामा सुविधा सम्पन्न सस्थ्य चौकी स्थापना गर्ने ।

१.२.२) वर्षमा कम्तीमा एक पटक विशेषज्ञ सेवा सहितको स्वास्थ्य शिविर सञ्चालन गर्ने ।

१.२.३) प्रत्येक विद्यालयहरुमा एक जना नर्सको व्यवस्था गर्ने ।

१.२.४) स्वास्थ्यसम्बन्धी चेतनामूलक कार्यक्रमहरु आयोजना गर्ने ।

१.२.५) कम्तिमा २५ शैया भएको एउटा सुविधा सम्पन्न अस्पताल स्थापना गर्ने ।

## १.३. सस्कृति

१.३.१) मुसिकोट नगरपालिका भित्रका विभिन्न जातजातिसंग सम्बन्धित रीति रिवाज तथा परम्परा (जस्तै धाँटु नाच, कौरा, सोरठी, सराय, लोक गीत, लोकनाच, नौमति वाजा) हरुको सम्बर्द्धन तथा प्रवर्द्धन गर्ने । ३

# २.पूर्वाधार विकास :

## २.१. पर्यटन

२.१.१) आँपचौर देउराली , मालिका, सालीमे, वामीकोट, मुसिकोट, छत्रकोट, जस्ता धार्मिक महत्वका क्षेत्रलाई सडक सञ्जालले जोडेर धार्मिक पर्यटक प्रवर्धन गर्ने ।

२.१.२) पैदलमार्ग : वामीटक्सार-वामीमैदान-दासिंङ-सोलाथापे-मालारानी-मालिका-स्वाँरा-आँपचौर-दजाकोट-मुसिकोटमैदान-मुसिकोट देउराली-पौदीअमराई-वामीटक्सार सम्मको पैदलमार्ग (Trekking Rout) को निर्माण गर्ने ।

२.१.३) वाग्लुङ खारादेखि रुद्रवेनीसम्म राफि्टङ सेवा सञ्चालन गर्ने ।

२.१.४) उपयुक्त ठाँउमा कम्तीमा २ स्टार सम्मको होटलको स्थापना गर्ने ।

२.१.५) पल्टारदेखि सालिमेसम्म केवलकारको स्थापना र सञ्चालन गर्ने ।

## २.२ सडक

२.२.१) प्रत्येक वडालाई जोड्ने पक्की सडकहरु निर्माण गर्ने ।

२.२.२) उपयुक्त ठाँउमा एउटा सुन्दर बालमैत्री पार्क निमार्ण गर्ने तथा प्रत्येक वडामा साना बाल उद्यानहरु निर्माण गर्ने ।

# ३.आर्थिक विकास :

## ३.१. कृषि

३.१.१) एकगाँउ एक उत्पादनको अवधारणा लागु गर्ने ।

३.१.२) सामूहिक खेती लागु गरी खेतियोग्य जमिनको सदुपयोग गर्ने ।

३.१.३) उत्पादकत्व बृद्धि गर्नका लागि उपयुक्त ढंगले सिंचाई सुविधा उपलब्ध गराउने । ४

३.१.४) कफि उत्पादनलाई आँपचौरबाहेक अन्य संभा
स्थानहरुमा विस्तार गर्ने ।

३.१.५) जेटि, जेटिएको सुविधा सहित कृषि तालिमको व्यवस्था
।

३.१.६) अर्गानिक तरकारी तथा फलफूल उत्पादनमा जोड दिने

### ३.२. उद्योग

३.२.१) स्थानीय कच्चा पदार्थमा आधारित लघु उद्योग स्थापन
।

३.२.२) जडिवुटिमा आधरारित एउटा औषधि उद्योग स्थापना ग

## ४.वन वातावरण तथा विपद् व्यवस्थापन :

### ४.१. वन, जंगल तथा वातावरण

४.१.१) मुसिकोट नगरपालिका भित्रका वनजंगलहरुको
संरक्षण गर्ने ।

४.१.२) सालिमे दह, घाँकुर, करङखोला, ददल्का, उर्लेनीर
जंगललाई जैविक विविधता संरक्षण क्षेत्र घोषणा गर्ने ।

४.१.३) वातावरण संरक्षणमा योगदान पुर्‍याउने व्यक्ति,
संस्था र समुदायलाई वर्षेनी विश्व वातावरण दिवसक
पुरस्कृत गर्ने ।

### ४.२. विपद व्यवस्थापन

४.२.१) प्राकृतिक प्रकोप तथा विपद व्यवस्थापनको लागि व
२,३ वटा उपयुक्त स्थानमा तत्काल राहतस्वरुप
बसोवासको व्यवस्था गर्ने ।५

४.२.२) नगरपालिकामा एउटा दमकल र एम्बुलेन्स व्यवस्था गर्ने ।

४.२.३) बडिघाट खोलामा आवश्यक ठाँउमा तटवन्ध गरी खेतियोग्य जमीनको संरक्षण गर्ने ।

## ५.सामाजिक सेवा तथा सुसासन ।

५.१. मुसिकोट तथा यहाँबाट बसाइ सराइ गरेर देश विदेशमा गएका विभिन्न क्षेत्रमा विज्ञता हासिल गरेका मुसिकोट बाँसीहरु बिच सम्पर्क विस्तार गरी एउटा विज्ञसूचि तयार गर्ने ।

५.२. नगरपालिकाको एउटा प्रोफाईल र श्रव्य दृश्य सामाग्री तयार गर्ने ।

५.३. नगरपालिकाको Web Site लाई निरन्तर अध्यावधिक गर्ने ।

५.४. नगरपालिकाले आफ्नो वार्षिक प्रगति विवरण प्रकाशन गर्ने । सम्मेलनमा प्रस्तुत भएका कार्यपत्रहरु समेत परिष्कृत गरेर प्रकाशन गर्ने ।

<u>घोषणा पत्र तयारी समिति</u>

**संयोजक : प्रा.डा. श्री तारा प्रसाद सापकोटा**

**सदस्य : प्रा.डा. श्री जीवलाल सापकोटा**

**सदस्य : प्रा.डा. श्री पारसमणि भण्डारी**

**सदस्य : प्रा.डा. बुद्ध थापा**

**सदस्य : सह.प्रा.डा. श्री ज्ञान बहादुर थापा** ६